

क्वयेर युथ ग्रुप

**Queer Youth Group**

दर्ता नं : २४४९३५/०७७/०७८
स्था.ले.नं : ६०९८२६५८२

सन् २०१८ मा फुक्का संजालको रुपले सुरु भएको सन् २०२० मा मुनाफा वितरण नगर्ने संस्थाका रूपमा दर्ता भएको हामी सिमान्तकृत यौन अभिमुखिकरण, लैङ्गिक पहिचान र यौन विशेषताका व्यक्ति (क्वयेर व्यक्ति)हरूद्वारा नेतृत्व गरिएको र क्वयेर अधिकारमा कार्यरत छौँ।

Ref. No. चलानी : ०१५/०७७/७८
Date मिति : २०७७/०९/१३
PN पत्र : २

**नेसं ११४१ प्वँहेला १०**
**२०७७ पुष १३**

श्री उपकुलपतिज्यू,
पूर्वाञ्चल विश्वविद्यालय,
विराटनगर।

**बोधार्थ :**
श्री सचिवज्यू,
शिक्षा, विज्ञान तथा प्रविधि मन्त्रालय,
सिंहदरबार, येँ (काठमाडौँ)

**विषय : B.A.LL.B Program को पाठ्यक्रममा समयौनिकता (Homosexuality) लाई अप्राकृतिक मैथुनको कसुर अन्तर्गत राखिएकोमा गम्भीर ध्यानाकर्षण गराउँदै संसोधन गर्न गराउन कार्यवाही गरिपाउँ।**

महोदय,

उपरोक्त सम्बन्धमा यस पूर्वाञ्चल विश्वविद्यालयको B.A.LL.B Program को Syllabus अनुसार चौथो वर्षको Course Code 736 रहेको Forensic Science and Medical Jurisprudence विषय अधीन 9. Sexual Offence - b. Unnatural Sexual Offence (Homosexuality, Lesbianism, Beastiality) भनी उल्लेख गरिएकोमा हाम्रो गम्भीर ध्यानाकर्षण भएको छ र यस विश्वविद्यालयको समेत गम्भीर ध्यानाकर्षण गराउन चाहन्छौँ।

Unnatural Sexual Offence - अप्राकृतिक मैथुनको कसुर अन्तर्गत समयौनिकता (Homosexuality) लाई राखिएकोमा हाम्रो गम्भीर आपत्ती छ। समयौनिकता (Homosexuality) उस्तै / समान लैङ्गिकताका व्यक्तिहरू तर्फ यौन तथा प्रणयात्मक आकर्षण महसुस गर्नु हो। बोलीचालीको अङ्ग्रेजीमा Gay/Lesbian व्यक्तिहरू वा नेपाली भाषामा 'समयौनिक व्यक्ति'हरू भनेर बुझिन्छ। हामी यस पत्र मार्फत् यस विश्वविद्यालयलाई स्मरण गराउन चाहन्छौँ कि समयौनिक व्यक्ति हुनु वा समयौनिकता कुनै विकार, विकृति वा अप्राकृतिक विषय होइन।


ईमेल: queeryouthgroup.nepal@gmail.com
सम्पर्क नं : +९७७-९८०८२६२६९९
ठेगाना : ललितपुर महानगरपालिका-१६, ललितपुर, प्रदेश ३
http://fb.com/QYGnepal/
qygnepal
QueerYouthGroup

विश्व स्वास्थ्य संगठनले सन् १९९० मै समयौनिकता प्राकृतिक ठहर गरिसकेको छ। नेपालको सर्वोच्च अदालतले सर्वप्रथम विसं २०६४/०९/०६ निर्णय नं. ७९५८ बमोजिम समयौनिक हुनुलाई प्राकृतिक ठहर गरिसकेको छ । यस नजीर सिद्धान्त अनुसार सर्वोच्च अदालतले तहाँ पश्चात् सुनाएका फैसलाहरूले पनि सोही ठहर गर्दछ।

Sexual orientation is a person's identity in relation to the gender or genders to which they are sexually and romantically attracted. व्यक्तिलाई कुन लैङ्गिकताका अरु व्यक्तिहरू प्रति यौन तथा प्रणयात्मक आकर्षण हुन्छ भन्ने नीजको यौन अभिमुखिकरण / झुकाव हो। यद्यपि कुनै व्यक्तिको यौन अभिमुखिकरण विषमयौनिक (Heterosexual) अर्थात् आफू भन्दा फरक लैङ्गिकताका व्यक्ति प्रति यौन तथा प्रणयात्मक आकर्षण हुने बाहेक पनि विविध प्रकृतिको हुन सक्छ।

नेपालको संविधानले पनि 'लैङ्गिक तथा यौनिक अल्पसंख्यक' अन्तर्गत समयौनिक व्यक्तिहरू लगायत सिमान्तकृत यौन अभिमुखिकरण, लैङ्गिक पहिचान तथा यौन विशेषताका व्यक्तिहरूको अधिकार प्रत्याभूत गराएको छ । समयौनिकतालाई अप्राकृतिक मैथुन मान्ने प्रथा बेलायती उपनिवेशकालीन हो। बेलायतीहरूले उपनिवेश जमाएका देशहरूमा गैर-विषमयौनिक व्यक्तिहरूलाई अपराधिकरण गर्न यस्तो कानुन बनाइएको थियो भने अहिले क्रमशः त्यस्ता कानुनहरू हटाइँदैछ। नेपालमा त्यस्तो कानुन छैन। नेपालले संविधानतः समयौनिक व्यक्तिहरूलाई समान हकको प्रत्याभूत गराएको छ। कुनै दुई वा बढी वयस्क व्यक्तिहरू बीच हुने यौन सम्बन्धलाई यसरी अप्राकृतिकरण गर्नु विज्ञान संवत होइन।

अझ Lesbianism जस्तो अपशब्द, समयौनिक महिलाहरूलाई होच्याउन वा रोगिकरणको रूपमा प्रस्तुत गर्न प्रयोग गरिने शब्दहरू समेत विश्वविद्यालय जस्तो गरिमामय क्षेत्रको पाठ्यक्रममा प्रत्युक्त छ। बोलीचालीको शब्द Lesbian (समयौनिक महिला)हरूलाई जनाइन्छ र समयौनिक महिला हुनु पनि समयौनिकता (Homosexuality) अन्तर्गत नै पर्दछ।

अझ पशु करणी (Beastiality) जस्तो विषय सँगै एउटै महलमा राखिएको हुनाले यसले समयौनिक व्यक्तिहरूलाई अझै अपहेलित तुल्याएको छ।



ཀྭཡེར་ཡུཐ་གྲུཔ क्वयेर युथ ग्रुप क्वयेर युथ ग्रुप क्वयेर युथ ग्रुप

Queer Youth Group

दर्ता नं : २४४९३५/०७७/०७८

स्था.ले.नं : ६०९८२६५८२

सन् २०१८ मा फुक्का संजालको रुपले सुरु भएको सन् २०२० मा मुनाफा वितरण नगर्ने संस्थाका रूपमा दर्ता भएको हामी सिमान्तकृत यौन अभिमुखिकरण, लैङ्गिक पहिचान र यौन विशेषताका व्यक्ति (क्वयेर व्यक्ति)हरूद्वारा नेतृत्व गरिएको र क्वयेर अधिकारमा कार्यरत छौँ।

विश्वविद्यालय जस्तो गरिमामय क्षेत्रमा यस्तो कालविस्त्रिद्ध (outdated), अपहेलनापूर्ण र गलत सन्देश प्रवाह हुने ढङ्गले समयौनिकतालाई उल्लेख गर्नाले यस विश्वविद्यालय एवं नेपालको उच्च शिक्षा क्षेत्रमा नै प्रश्न उठाउँछ । हाम्रो समाजमा यत्तिकै पनि समयौनिक व्यक्तिहरूलाई पूर्वाग्रही, विभेदपूर्ण र लाञ्छनायुक्त व्यवहार व्यापक छ । समयौनिक व्यक्तिहरू पाइला पाइलामा हरेक क्षेत्रमा विभेद, लाञ्छना, अपमान र हिंसाको शिकार हुन बाध्य छन् । समाजमा व्यापक कुसंस्कार, कुरीति र विभेदपूर्ण मनशायलाई परिवर्तन गरी समानतामूलक र विभेद रहित समाज तर्फ उन्मुख हुनु पर्नेमा विश्वविद्यालय तहको शैक्षिक सामाग्रीमा यसरी समयौनिक व्यक्तिहरू र उनको सम्बन्धलाई अप्राकृतिक तुल्याएपछी यस शैक्षिक सामाग्री अध्ययन गर्ने विद्यार्थीहरूमा समयौनिक व्यक्तिहरू प्रति नकरात्मक विचार झनै पुनरुपादन हुन्छ ।

यस विश्वविद्यालयकै आंगिक शिक्षण संस्थाहरूमा अध्यनरत समयौनिक व्यक्तिहरू पनि हुन सक्छन् । यद्यपि शैक्षिक सामाग्रीहरूले नै लाञ्छित तुल्याएपछी ती विद्यार्थीहरूमा यसको direct प्रभाव पर्न जान्छ । यसै विषय अध्ययन गर्दै गरेका समयौनिक व्यक्तिहरू कस्तो वातावरण र अवस्थाबाट गुज्रन्छन् भन्ने विषयको कल्पना यहाँहरूले गर्नुहोला ।

अन्ततः हामी **यस विश्वविद्यालयलाई उक्त शैक्षिक कार्यक्रमको पाठ्यक्रमबाट अप्राकृतिक मैथुन अन्तर्गत उल्लेख गरिए अनुसार Homosexuality, Lesbianism जस्ता शब्द एवं समयौनिकतालाई अप्राकृतिक मैथुन अन्तर्गतबाट हटाउन एवं हालको पाठ्यक्रम बमोजिम बनेका पाठ्यपुस्तक एवं पाठ्यसामाग्रीहरूमा समेत समयौनिकतालाई यसरी उल्लेख नगर्न नगराउन आवश्यक पहल अघि बढाउनका साथै यस विश्वविद्यालयका सबै आंगिक क्याम्पसमा यस विषयमा संवेदनशील हुन र हालको पाठ्यसामाग्री अनुसार अप्राकृतिक तुल्याई अध्ययन नगराउन पत्राचार समेत गर्न** माग गर्दछौँ । यस विषयमा **'यौन अभिमुखिकरण, लैङ्गिक पहिचान तथा यौन विशेषता अधिकार' (SOGIESC Rights) एवं कानुनका विषयहरू पनि समावेश गरी अध्ययन अध्यापन गराई सिमान्तकृत यौन अभिमुखिकरण, लैङ्गिक पहिचान तथा यौन विशेषताका व्यक्तिहरू प्रति समानतामूलक शिक्षा प्रदान गर्न** समेत गर्न आवहान गर्दछौँ ।




रुक्शना कपाली, कार्यकारी निर्देशक

ईमेल: queeryouthgroup.nepal@gmail.com

सम्पर्क नं : +९७७-९८०८२६२६९९

ठेगाना : लपुमनपा-१६, ललितपुर, प्रदेश ३

 http://fb.com/QYGnepal/

 qygnepal  QueerYouthGroup

# Syllabus
# of
# B.A. LL.B. Program

(Revised 2075 B.S.)



## Purbanchal University
Biratnagar

Published by:




**Chakrabarti HaBi Education Academy**
**(College of Law)**
Bijulibazar, Kathmandu, Nepal
Tel: +977-1-4785808 / 4785809, Fax: 4785810, P.O. Box: 11435
Email: info@chbea.edu.np, Website: www.chbea.edu.np

a. Exhumation,
b. Asphyxia (Hanging, Strangulation, Drowning and Suffocation)
c. Starvation
d. Death Due to Cold and Heat
e. Death Due to Electrocution and Lightening
f. Death Due to Burn Injuries
g. Death Due to Sharp-edged Weapons
h. Death Due to Mechanical Violence (Ammunition, Gunshot)

**5. Estimation of Time of Death Alvor-Mortis, Germination, Effects**

**6. Medico Legal Aspects of Wounds and Injuries**

a. Introduction of Injuries and Wounds and Their Medico-legal Aspect
b. Kinds of Injuries and Wounds
c. Determination of Age
d. Gravity of Injuries and Cause of Death Due to Injuries
e. Ante-mortem and Post-mortem Injuries
f. Difference Between Suicidal, Homicidal and Accidental Wounds

**D.. Accident**

a. Traffic Accident - Cause and Symptoms
b. Aircraft Accident – Cause and Symptoms

**D.. Virginity, Pregnancy and Delivery**

a. Sign of Virginity and Pregnancy
b. Presumptive and Probable Signs
c. Biochemical Tests for Pregnancy
d. Delivery
e. Sign of Recent and Remote Delivery in Living and Dead

**9. Sexual Offence**

a. Rape
- Examination of Victim
- Examination of Accused
- Medico Legal Question in Rape Case
- Sex Related Homicides and Sadism
- Identification and Individualization of Vaginal Swab and Semen Stains

b. Unnatural Sexual Offence (Homosexuality, Lesbianism, Bestiality)

c. Abortion
- Classification
- ii. Spontaneous Abortion
- iii. Therapeutic Abortion
- iv. Evidence of Abortion

**10. Impotence, Sterility and Artificial Insemination**



**11. Insanity and C**

a. Terms Often
b. Classificatio
c. Functional I
d. Depressive I
e. Schizophren
f. Psychosis As
g. The Develop

**12. Toxicology**

a. Medico-Lega
b. Analytical As
- Principles
- Nature of
- Definition
- Analytical
- Comparati

**13. Forensic Identif**

a. General Conc Stimulant, Tra
b. Reliability of Instrumental M

**14. Forensic Applica**

a. Glass and Pair
b. Hair and Fiber
c. Arson and Exp
d. Blood and Boc
e. Marks and Imp
f. Fire Arms
g. Soil

**15. Questioned Docu**

a. Handwriting ar
b. Forgery and Di
c. Alteration and
d. InkComparison
e. Paper Comparis

**16. Paternity Testing**

a. Introduction anc
b. Basic Genetics
c. Collection of Bl
d. Red Cell Antige

**17. Expert Opining ar**